# मानव उत्पति र खेवा वंश



प्रकाशक

खेवा लिम्बू परिवार

पूर्व पल्लो किराँत लिम्बुवान

# मानव उत्पति र खेवा वंश



**प्रकाशक**

खेवा लिम्बू परिवार

पूर्व पल्लो किराँत लिम्बूवान

# मानव उत्पति र खेवा वंश

**पुस्तक प्रकाशन कार्य समिति**

| | |
|---|---|
| अध्यक्ष | - श्री लोकेन्द्रबहादुर तिगेला (लिम्बू) |
| उपाध्यक्ष | - श्री इन्द्र मादेन (लिम्बू) |
| सचिव | - श्री शिवकुमार तिगेला (लिम्बू) |
| कोषाध्यक्ष | - श्री तिलकबहादुर तिगेला (लिम्बू) |
| सदस्य | - श्री हुकुमप्रसाद मादेन (लिम्बू) |
| सदस्य | - श्री खमबहादुर मंयाक (लिम्बू) |
| सदस्य | - श्री डिल्लिराम मंयाक (लिम्बू) |

**प्रमुख सल्लाहकार**
श्री क्या.गजरधन तिगेला (लिम्बू)
श्री कमल प्र. तिगेला (लिम्बू)

**वंशावली संकलक**
लोकेन्द्र तिगेला खेवा
छथर हात्तिखर्क -२ धनकुटा
क्या. गजरधन तिगेला खेवा
धरान-१५, सुनसरी

**विशेष सहयोगी**
शिवकुमार तिगेला खेवा
हात्तिखर्क-६, धनकुटा


**कम्प्यूटर ले आउट :**
**विष्णु वराल**

**कम्प्यूटर व्यवस्था**
सुनवर्षी सञ्चार विकास केन्द्र
**Apple Computer Printers**
**Chatraline, Daran-12 ☎ 025-24249**

**प्रकाशक**
खेवा लिम्बू परिवार
पूर्व पल्लो किराँत लिम्बूवान
**प्रकाशन मिति** - २०५५ आषाढ



**मूल्य रु. -**

(5 Oct 2020)
any feedback: direct.letter@gmail.com (or)
biswasdipe@ymail.com



**Captain Gajardhan Tigela Khewa (Limbu)**
**Dharan-16, Sunsari**



Mr. Lokendra Bdr. Tigela Khewa (Limbu)
Hattikharka-2, Dhankuta



**कमल प्र. तिगेला खेवा (लिम्बू)**

छथर ओखे-३, तेह्रथुम, हाल : धरान-१६, सुनसरी

शिक्षा- एम. ए. अ (राजनीतिशास्त्र ) बी.ए. (अंग्रेजी), बी.एल. (अपराध शास्त्र)

**Bachelor's Degree in Law (Criminology)**



शिवकुमार तिगेला खेवा
हातिखर्क-६, धनकुटा

# मन्तव्य



कुनै पनि जाति (सम्प्रदाय) को जातीय अस्तित्व अमर राख्न र भावी सन्तती समक्ष विभिन्न कालमा घटेका घटना क्रमका जानकारी गराउन दिब्य दृष्टिको रुपमा इतिहास र वंशावली बाहेक अन्यथा अरु केहि हुन सक्दैन। यसैलेगर्दा मैले पनि आफ्नो खेवावंशको वंशावली संकल्प सम्बन्धि चिन्तन मनन गरेको लगभग ३५ वर्ष व्यतित भइसक्यो । यस अवधी भित्र पटक-पटक गरी आफ्नै गाउँ ओखे-तेह्रथुममा बसोबास गर्ने तिगेला वंशहरुसंग राय सल्लाह (बैठक) बाट पनि तिगेला वंशावलीको यथार्ग विवरण संकलन हुन सकेन ।

अन्तमा छथर धनकुटा हात्तिखर्क गा.वि.स. वा.नं. २ निवासी लोकेन्द्र तिगेलाले खेवा सम्बन्धिको लेख टिपोट र खेवाहरु (तिगेला, मादेन, मंयाक) को वंशावली मस्यौदा गरि प्रकाशन गर्न मसंग सम्पर्क राख्न आउनु हुँदा मैले पनि सुदापमा रहेका तिगेला खेवाको वंशावली र थोरै मात्रमा भएपनि तुम्वा खेवाको वंशावली संकलन गरी राखेकोले प्रकाशनार्थ वहाँलाई जिम्मा दिएँ । यसरी आफ्नो अमुल्य समय र आफ्नो तनमन दिइ ऐतिहासिक सामाग्रीहरुको खोज अनुसन्धान गरी अन्धकारको खाडल र डाँडापारिको ओझेलमा परी सकेका खेवा लिम्बु समुदायका वंशहरुको उत्थान गर्ने क्रममा यस खेवा वंशावली समावेश भएको यो सानो "मानव उत्पति र खेवा वंश" नामक पुस्तकले केहि मात्रामा भएपनि सहयोग पुग्नेछ भन्ने अपेक्षाको साथ लेखक तथा संकलक प्रति मेरो आत्मा देखिनै हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

**- क्या. गजरधन तिगेला खेवा**

ओखे, तेह्रथुम, हाल धरान न.पा.-१६, सुनसरी

# मन्तव्य



किरात लिम्बु अन्तर्गत खेवा वंशमा जन्मिएका छथर हात्तिखर्क -२ निवासी श्री लोकेन्द्र तिगेला खेवाद्वारा लिखित "मानव उत्पति र खेवा वंश"का लेखहरु र संकलित खेवाहरुको वंशावली सरसर्ती अध्यनगर्दा खेवाहरुको वारेमा निक्कै गहिरो अध्यंनगरी, खेवाहरुको अप्रकाशित वंशावलीको कागज पत्रहरु संकलनगरी लेखिएको यो सायद पहिलो पुस्तक हो। जसले सम्पूर्ण खेवा वंशको अस्तित्वको जगेर्ना गर्ने सु-अवसर मिल्ने छ र नेपालको विभिन्न क्षेत्रमा अन्य मुलुकमा वसोवास गर्ने सम्पूर्ण खेवा वंशका परिवारलाई एकत्रित गर्न समेत मद्दत गर्ने छ भन्ने अपेक्षाकोसाथ आफ्नो अमुल्य समय तनमन दिइ खोजअनुसन्धान तथा वंशावली संकलनगरी यौ सन्देश खेवा समाजमा पुऱ्याइ सहयोग गरेकोमा लेखक तथा संकलक प्रति हार्दिक धन्यवाद ज्ञापन गर्द छु।

**– स्व. हिर्दयमान तिगेला**

छथर हात्तिखर्क -६, धनकुटा

# मन्तव्य



पूर्व पल्लो किरात लिम्बुान क्षेत्र अन्तर्गत छथर हात्तिखर्क २ निवासी श्री लोकेन्द्र तिगेला खेवाद्वारा लिखित "मानव उत्पति र खेवा वंश" । आजको यस नेपाली समाजमा छथरमा वसोवास गर्ने खेवाहरुसंग सम्बन्धित लेख र खेवा वंशावलीमा २२, २५ औ पुस्तासम्मको पिंढि संकलन र खोज अनुरन्धान गरी प्रकाशनगर्न लागिएको यो पहिलो अवसर हो, भन्ने कुरामा म स्पष्ट भन्दछु । खेवा समाजको निमित्त उहाँले प्रयास गर्नु भएको अनसन्धानवाट सम्पूर्ण खेवा परिवारहरुको खाँचो पूरागर्ने लक्ष्य रहँदा रहदै पनि केहि खेवा परिवारको वंशावलीको वारेमा खोज अनुसन्धानगर्ने समय अभावबाट संकलन हुन नसकेको भएता पनि सवै खेवा परिवारको निमित्त यो पुस्तक आधारको रुपमा प्रयोग हुने र भावी सन्ततीकोलागी समेत जानकारी हुने र यसैलाई आधार मानी पून: वंशावली निर्माणगर्दा यसै पिंढिहरुवाट जोडेर लैजान सक्नेछन् ।

अन्तमा लामो समयको खोज अनुसन्धान अध्यन, संकलन गरी केहि हदसम्म खेवाहरुको खाँचो पुरा गरिदिनु हुने लेखक तथा संकलक प्रति हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

**प्र.सु. प्रेम बहादुर मंयाक खेवा**
छथर हात्तिखर्क-३ धनकुटा

# आफ्नो भनाई



परम पुज्यनिय पिता श्री ललितबहादुर तिगेला खेवा र माता स्वर्गिय कृष्ण कुमारी तुम्बाहाम्फे (तिगेला) को दोश्रो सुपुत्रको रुपमा वि.स. २००४ साल जेष्ठ २५ गते जन्म भई वहाँहरुको न्यानो मायाँ ममता र लालन पालनबाट हुर्कि वैवाहिक वन्धन श्रीमती रुपमाया राई (तिगेला) संग कायम भई तीन भाई छोराहरु कमल, निर्मल, अनुप तिगेला खेवाहरुका साथमा वसि जीवनको सुख दुःखका जंजीर पारगर्दै किरॉत कुलका लिम्बुवान खेवा वंशमा जन्म भएको पाउँदा खेवा के हो ? खेवा कसरि नामाकरण भयो ? भन्ने कौतुहल मेरो हृदयमा समय समयमा झल्कि रहने हुँदा खेवा उन्पति खेवा विभाजन, खेवा वंशावली र कुनै ईकाईमा रहेका खेवा वंशका मर्यादित ब्यक्तिहरु साथै ऐतिहासिक ब्यक्तित्वका वंशजहरुको स्मृतिलाई भावि पिंढिका शाखाहरुमा जानकारी रहोस भन्ने अपेक्षा गरी यो सानो "मानव उत्पति र खेवा वंश" नामक पुस्तक प्रकाशन गर्न लागेको छु ।

तिगेला खेवा वंशावली प्रकाशनको लागी वंशावली टिपोट दिनुको साथै हृदयवाट नै दिलो ज्यानदिई सहयोग गर्नुहुने मेरो बडा बाबु श्री हिर्दयमान तिगेला, प्रति आभार प्रकट गर्दछु । यसरी वंशावली प्रकाशनको निमित्त वंशावली संकलन गर्न सहयोग गर्नु हुने श्री टिका बहादुर तिगेला, श्री गजेन्द्र बहादुर तिगेला, श्री तिलक बहादुर तिगेला, श्री जितमान सिं तिगेला र सुदाप गा. वि. स. मा वसोवास गरेका तिगेला खेवा परिवारहरुको वंशावली संकलन र खेवाहरुको गढ मानिएको स्थान 'थाक्लुङ' को फोटो सहित प्रकाशनार्थ प्रदान गर्नु हुने क्याप्टेन श्री

गजरधन तिगेला खेवा र हरेक पक्षमा विशेष राय सुझाव दिइ सहयोग गर्ने कमल तिगेला प्रति हार्दिक कृतज्ञता चढाउँ छु ।

यसरी नै मङ्याक खेवा र मादेन खेवाहरुको वंशावली संकलन टिपोट गरी सहयोग गर्नु हुने हात्तिखर्क -३ निवासी श्री चन्द बहादुर मङ्याक, श्री दल बहादुर मङ्याक, श्री धनकेसर मङ्याक मुर्तिढुङ्गा निवासी श्री इन्द्र मादेन, हात्तिखर्क-६ निवासी श्री हुकुम प्रसाद मादेन र सान्ने गा.वि.स.-८ निवासी श्री थम्वाहाङ मादेन खेवा प्रति आभार प्रकट गर्दै बाँकी खेवा वंशहरु चोङवाङ आङलावाङ र तुम्वा खेवाको वंशावलि संकलन हुन नसकेको कारण प्रकाशन गर्न नसकिएको जानकारी सम्पूर्ण खेवा वंशका पाठक वर्गमा अवगत गराउँछु ।

यस 'विजयपुरको सेनवंशी राजहरुसंग खेवाहरुको संबन्ध' पुस्तकमा रहेका सम्पूर्ण लेख, वंशावली सम्वन्धि पाण्डुलिपी पूर्ण तयार गर्ने आत्मा सहयोगी मेरो भाई शिवकुमार तिगेला खेवा प्रति धन्यवाद दिदै प्रकाशनको निमित्त आर्थिक संकलन गर्न सहयोग गर्नु हुने तिगेला, मङ्याक, मादेन खेवाका वंशजहरु र अन्य सम्पूर्ण आर्थिक संकलन गरी सहयोग गर्नु हुने सहयोगी मित्रहरु प्रति आभार ब्यक्त गर्द छु ।

**लोकेन्द्र खेवा**

हात्तिखर्क-२ धनकुटा

# विषय सूचि

# नावगेन चईत (मानव सृष्टि) मुन्धुम

स्त्रीबाट हुने घाम, जुन "लायाप्मी नायप्मी" जस्तै मानिस भएनभने बारीको माटोले बनिएको पृथ्वी, पुल, साँगु "तरङ् दिङ् ताङ्साङ्" जस्तो तन्कीएको आकाश नसुहाउँदो रहेछ भनि उज्यालो पसेर आउने ढोका र जताबाट पनि आईपुग्ने परमात्मा "ताः तारा ताः गेरा निङ्वाफु माङ्" देवले सम्झेर स्त्रीबाट हुने मानिसको सृष्टि गर्ने इच्छा गर्नुभयो । तब तागेरा निङ्वाफुः माङ (इश्वरको आत्मा) ले परोप्मी, यम्फाःमी लाई स्त्रीबाट जन्म हुने मनिस जातिको आकार बनाउन हुकुम गर्नुभयो । यसैगरी परोप्मी यम्फामी माङ्ले सुन चाँदी "सम्याङेन आम्लेङ् युप्पागेन चेल्लेङ" हिरा र मोतिको स्त्रीबाट जन्महुने मानिसको प्रतिमा नावागेन् चइत्को नमुना बनाएर हम्काए ईश्वरले जुनको छोरा, घामको छोरा भइस् र अब स्त्रीबाट जन्म लिने मानिस पनि तिमिनै भयौ उठ भनि "इश्वर" परोप्मी यम्फामी माङ्ले त्योप्रतिमा (चइत) लाई बोलाए तर बोली वा आवाज "पेलिगेन्पान्" आएन । तव ईश्वर छक्क परेर ताःतारा ताःतागेरा निङ्वा फुः माङ "जतैबाट पनि आईपुग्ने परमात्मा" संग ज्ञान बुद्धि "सिक्कुम निङ्वा" मागेपछि ताःतारा ताःगेरा निङ्वा फुः माङ्ले ज्ञानबुद्धि दिनुभयो । परोप्मी यम्फामी माङ्ले लेकाली मालीङ्गो, निगालो "सिमिक्ला पोक्ला" को खरानी, बारीको पहेलो माटो, ढुङ्गामाथि खोपिल्टो परेर जमेको पानी (वाही वा लुङ्दुम् पाक्वा) मिसाइ हिलो बनाएर स्त्रीबाट जन्मीने मानिस बनाइ हुँ भनि बोलाउनु भयो, तव त्यस प्रतिमाले पनि के भन्नुभएको भनि हुँ (थेसुम्बुथे) जवाफ दिए । त्यसको लहराजस्तै बेरिने साथि नभएको हुनाले अरु केहिकुरा गर्नसकेन । परोप्मी यमफामी माङ्ले मासुको शरिर भएको पशुपक्षिहरु (थक्शागेन कुपुहा) जोडि जोडि भएर हिडेका र बसेका देख्नुभयो र बिचारनु भयो । मानिस पनि स्वास्नी छैन भने नसुहाउदो रहेछ भनि तब ताःतारा

ता:गेरा निङ्वा फुमाङ्ले मानिस जन्माउने स्वास्नी मानिसको प्रतिमा (चइत) को आकार बनाउने ज्ञान बुद्धि दिनुभयो । वहाले स्त्रीबाट हुने घामजस्तो मानिसलाई घोर निन्द्रामा पार्नुभयो र मानिस जन्माउने जस्तै स्वास्नी मानिसको रुपबनाइ मानिसको-सातो हालिदिनु भयो र परोप्मी यम्फामी माङ्ले स्त्रीबाट हुने मानिस बनाइ स्वास्नी मानिस र लोग्ने मानिस दुबैलाई जगाउनु भयो र तिदुबै जनाले एक अर्कोमा हेराहेर मात्र गरे तर कुरा (वातचित) गर्नसकेनन् । तव परोप्मी यम्फमी माङले ढुङ्गामाथि जमेको आकाशे पानी, (लुङ्दुम् पाकवा) मर्चा (खेसुङ्) फिटेर ती दुबै जनालाइै पिउन लगाए त्यो मिश्रीत पानी पिएपछि दुबैजना एक आपसमा कुरागर्न लागे । यसरि परोप्मी यम्फामी माङ्ले इच्छा पुराभएको हुनाले प्रशन्न भएर वाहाँले आशिर्वाद दिनुभयो । वाहाँले पाँचवटा माहावाणी श्रोतबाट बाँच्नु (१) ईक्शा (धरती) (२) इखे (हावा) (Atmosphere) (३) मुक्कुम (ताप) (४) चफत् (पानी) (५) पोगुगेन् कुजा खाई यस संसारमा घुम्दै फिर्दै बस्नु भनि इश्वरको वाणी छाड्नु भयो ।

तव ईश्वर परमात्माले यी पाँच कुराहरुको शक्तिबाट प्राण राख्ने वरदान दिनुभयो र वहाले भन्नुभयो- तिमि दुवै मेरो छोरा-छोरी भयौ । सृष्टिका फुल भयौ । मायाँका फुल भयौ, जिवनका फुलभई तिमि दुवै बारीको माटोले बनिएको पृथ्वी, पुल, साँगु जस्तै तन्किएको आकाश (तरोङ्दिङ् ताङ्साङ्) सुहाउदो भएर आगोबाट बनिएको उज्यालो सुर्य र जुन पनि सुहाउदो भए, माशुका शरिर भएका पशुपंक्षिहरु (थक्सागेन् कुपु) खोला-नाला बनजंगल, समुन्द्रका जलचरहरुको माछा सबै सुहाउदो भयो र तिमिहरु मजस्तै पवित्र र शुद्ध भएर यस धरती (इक्शाखाम्वेक्) मा बस्नु अनि माटोले बनिएको यस पृथ्वीका बनजंगल, पशुपंक्षि, माछा, किरा फट्याङ्गरा सबै उपभोग गर वा फलफूल खाएर बस भनि आशिर्वाद परमेश्वरले ति दुवैको तरुणी-तन्नेरिको बैंश हाली दिनुभयो ।

अब जन्माउने ती स्वास्नी मानिस सर्वप्रथम तरुणी अवस्थामा पुगिन् । त्यसपछि विषय वास्नको भोक ती दुवै जनाको उत्पन्नभयो । त्यसपछि काँध वा जुरोजस्तै रुप भएको ढुङ्गाको पहाड रा सेवालुङ् पहाडबाट शितल हावा तलमाथिबाट आएको सफा दिन लिएर दक्षिण तेमेन् वेरक् (समुन्द्र) को गर्मी हावा बगेभ्रै गरम शरिर पुर्व-पश्चिम घाम झुल्किने, अस्ताउने मनोहर दृश्यझै साह्रै मनपराए र ती दुवै मानिस र स्वास्नी मानिस आपसमा भिसाइ दियो । हाडबाट मानिसको सन्तान पैदा गराउने लिङ्सुलिमा शक्तिले वंश हुने (चइत्) नमुना फकेपाछी ती दुवै जनाको भोक शान्त भयो र त्यहि संभोगले सुसुङे लालाङेको जन्मभयो ।

सानै उमेर देखि ज्ञान बुद्धि र चेतना भएको मानिस भएको हुनाले सानै उमेर देखिनै तिनिले आफ्नो जन्मदिने आमासंग धनुषकाँड माँगे । तर आमाले भनीन्- सन्तान पैदागर्ने तिम्रा पीता (केसिङ्दिङ्पा) नभएको बेला मैले कहाँबाट धनुषकाँड दिनु भनि भने । सन्तान पैदागर्ने मेरो बाबुको मान-इज्जत ठुलो नभएको मेरो जन्म नहुनुपर्ने यसकारण म कताबाट जन्मिए ? भनि सुसुङे-लालाङेले आमालाई सोधे । नानि ! तिमि स्त्रीबाट जन्म हुने मानव पुत्रहौ । तिमि वायुवतासका पुत्र, पहाड-टाकुराका पुत्र, आठवटा दिशाका हावाका पुत्र पनिहौ भनि उसकी आमाले भनिन् । पछि अलिक हुर्केपछि आमाले धनुषकाँड बनाइदिए पछि उसले पंक्षिको शिकारगर्न थाले ।

किरात याकथुङ् (लिम्बु) को मुन्धुम (वेद) मा यसरि मानिसहरुको सृष्टि भएको उल्लेखित गरिएको पाइन्छ । प्यारामिड र बेबिलोन्को बँगैचाको बनावट टुप्पोबाट बनाएर फेदमा टुङ्ग्याएको देखिन्छ । भने लिम्बु वेदमा पनि यस्तै पहिला मानिसको सृष्टि भएर स्त्रीबाट जन्महुने मानिसको पैदाहुन शुरुवात हुन्छ ।

## पापको सृष्टि

मानव सृष्टिको पहिलो मानिस सुसुंडे लालाँडे उमेर पुगी जवान् अवस्थामा पुगेपछि उत्तराखण्डको सिंयुक मुदेन्को कस्तुरि (सुङ्सा) र तेमेन्वेरक, (दक्षिण खण्ड) को ताङ्सा (चित्तल) को शिकार खेल्नसक्ने भयो । यसै समयमा उसको आमाले जन्माएकि लाहादोङ्ना नाम गरेकि छोरि पनि तरुणी अवस्थामा पुगेकि थिइन् । प्रकृतिले जन्मिएर उमेर पुग्ने भएको हुनाले ती दुनो तन्नेरी (नालिगेन् थाङ्बेन) तरुणी (सिसागेन् मेन्छीय) पुगेका र प्राकृतिले गर्दा ति दुईमा सम्भोग भयो र उनिहरुका माइति (स्वाँवाबा) चेली (माङ्नेना) हाड नाता बिग्रीयो र यस विषयमा तागेरा निङ्वाफु माङ्ले देख्नुभयो । आपसमा हावा-बतासबाट जन्म भएकी चेली-माईतिको हाड नाता बिग्रेर "पाप" भएको ता:तारा ता:गेरा निङ्वाफु माङले देख्नु भएको हुनाले तीदुनो सुसुंडे लालांडे (Adam) र लाहदोङ्नालाई बोलाएर भन्नुभयो । अव माईति चेलीको साइनो बिगारे, हाड नाता बिग्रेको हुनाले पाप भयो र अब स्त्रीबाट जन्मने सन्तान मर्नेछन् । तिमि दुइ पनि खरानि, पहेलो, बारीको माटो र अढारको पानीले बनेका मानवहौ, खरानी भएको हुनाले बारीको माटोमा मिसिनेछौ भनि सृष्टिकर्ता इश्वरले श्राप गाली दिनुभयो ।

सुसुंडे लालांडे (Adam) ले पनि ता:गेरा निङ्वाभुमाङ् संग बिन्ती चढाए मलाइ सृष्टिको मायाँ मोहको फुल फुलाउनु भयो, हाम्रो बैंश हालेर तरुणी तन्नेरीको मायाँ मोह दिलाउनु भयो, प्राकृतिक रुपमा यो हुन आयो, यस्तो भएन भने सृष्टिको बृद्धि कसरी हुने भनि बिन्ती गरे । तव ता:गेरा निङ्वाभुमाङ् (इश्वर) ले बचन गर्नुभयो, तिमीहरु सन्तानमा सातपुस्ता सम्म हाड नाताको बारन् गर्नु । सात पुस्ता पुगेपछि अर्कै जाति भएको हन्छ र अर्कै बंशसंग कुटुम्ब गर्नु वा विवाह गर्नुमा आपत्ति हुनेछैन । तर आफ्नो छोरा, नाती, छोरी, नातीनीहरु संग कुटुम्ब गर्न

पाप हुनेछ । कसैले यस थिती रितीहरु विगारि माइति चेली आपसमा हाडनाता मिचियो भने स्वर्गबाट लाहादोङ्नाले उज्यालो पारी बिजुलीको ज्योति चम्केकोबेला कुनै वस्तुको रुपधारण गरि त्यस्ता "पापीहरुलाई" मेघबाट बज्र झारी मार्नेछु भनि सृष्टिकर्ता ईश्वरले (मुजोक्लुङ्माङ्) भन्नुभयो । वहाले भन्नुभयो यो धरतिमा (ईक्शाखाम्वेक्) सुखवाट दुःख हुनेभयो, अबं स्त्रीबाट जन्मने जुन, घाम (लायप्मी नामयप्मी) जस्तै मानिसको सन्तान अवदेखि मर्नुपर्नेछ, रुनु शोकसुर्ता गर्नु पर्नेछ, दुःख भोगेर जन्मी दुःखै सहेर बाँच्नु पर्नेछ । पापले गर्दा स्त्रीहरु सुगुप लेछाम हुने, पुरुषहरु सोघा सिया र वालकहरु मच इत्यादि भएर मर्नुपर्छ भनि भन्नुभयो । फेरि ईश्वरले भन्नुभयो । अब सुसुंडे-लालांडे र लाहादोङ्नाले अघि शुरुबाट भइआएको फुल फुलाउन मायाँ-मोह गर्नु छोरा छारीको सन्तानहरु जन्माउनु र बृद्ध अवस्थामा मर्नु । बारिको माटो द्वार बनेको शरिर यसै माटोमा बिलाउनु तिमिहरुको मृत आत्मा यसै पृथ्वीमा घुमिरहनेछ भनि परमात्मा (तागेरा निङ्वाभुमाङ्) ले तीदुइलाई परम्पराको बाटोलगाई लोग्ने र स्वास्नी (मेलिङ्गेलमेत र पानोदिङ् येम्बा) को संपर्कभई बस्ने आर्शिवाद दिनुभयो । यसरि सुसुंडे लालांडे र लाहदोङ्नाका कोखबाट सुहामफेवा र सुसाङनिवाको जन्मभए । उनि दुइको कोखवाट साङ्दाङ् खेवा र लिङ्दाङ् खेवाको जन्म भए । फेरि उनि दुइको कोखवाट सांखेनयम्बा र सांखेनयम्माको जन्मभयो । फेरि उनि दुइको कोखबाट पान्फेन यम्बा र ईङ्फेनयम्बाको जन्मभयो र उनिहरुको कोखबाट आवासोपत्ता र तिल्लीसो पत्ता माइती र चेलीको जन्मभयो । यसरि धरै शाखा सन्तानको जन्म भएको हुनाले त्यो मुना मैदान ढाकियो र बस्न त्यहाँ नआँट्नाले चारैदिशा फैलिए । कोहि उत्तर, कोहि दक्षिण, कोहि पश्चिम र कोही पूर्व दिशातिर आ-आफ्नो टोली (ग्रुप) को समुह लिएर विभिन्न दिशातिर लागे ।

## मानव उत्पति र खेवा वंश

यसरि आवसोपत्ता माईति र तिल्लीसोपत्ती चेली दुई जना घुम्दै फिर्दै जाँदा ईमेदिङ मुनायोक्मा पुगे । दुईजना घमण्ड भएर ज्यानको बाजि राख्ने सर्तगरे । यो ठाउँमा आएर कुन (चेलीमाईती) धेरै बाँचेर बस्ने भनेर शिकमुरी फूलको मुन्टा चडाएर हानाहान गरेछ । तर त्यो ठाउँको गर्मिले गर्दा त्यो फूल एकैछिनमा ओइलीहालेको हुनाले ती दुवै चेली माईति मरिहाले । यसकारण लिम्बुहरुको परपंरामा माइँति चेलीमा फूल साटासाट (Exchange of Flower) गर्ने चलनछैन । पछिबाट उनिंहरु दुइजना नाम बदली अर्को जन्म लिए । नासिङेन माइति र "फुङ्लोतिमा चेली फेरि भेटभएर फङ्लोतिमाको ज्यानमा नासिङ् गेन्ले ज्यान मिसाई दिए र त्यहानै नासिंङेन मरिहाले । अब फुङलोतिमाको गर्भबाट जुम्ल्याहा छोरा र छोरि भए । तिनिहरु केसींगेन र तिगेनजोङ्ना भन्थे । तन्नेरि र तरुणी भएपछि एकैठाउमा बस्नलागे । रहदा बस्दा तिगेनजोङ्नाले दाजुसंग सधैं छुल्याइकुरा मात्र गरको हुनाले केसिङ्गेन (माईति) र तिगेन्जोङना सधैकोलागि छुटे । यसोगर्दा तिगेनजोङना घुम्दै फिर्दै जाँदा मुनाखाम्ना भन्ने ठाँउमा पुगीन् । त्यो ठाउँमा रहदा बस्दा गर्भवति भइन । दसमहिना पुगेपछि तिगेनजोङ्नाले जम्ल्याहा छोरा पाइन् । उनिहरुलाई केसामी र नाम्सामी भन्थे । दिनदिनै हुर्किंदै जाँदा केसामीले नाम्सामी माथि डाही गर्नथाले, किनभने नाम्सामी बाठो, सुन्दर र चनाखो थिए । केसामी चाँहि लाटो अधबेस्रो, मुर्ख तर बलियो थियो । सधैं भाईलाई कुट्छु, मार्छु मात्र भन्थे । नाम्सामीले यी सारा कुराहरु आफ्नी आमालाई भने । आमाले पनि नाम्सामीलाई होस्यार संग बस्ने सल्लाह दिए । तिमी दुईजनाका माझमा आखिर डाहिभएको छ र तिमी दुईजनामा को पहिला मर्नेछौ सो हेर्नलाई फुलको बिजन अलग अलग गरेर रोप्नु पर्छ । केसामीको नाममा बावारी फूल र नामसामीको नाममा सेकमुरी फूल रोपे... । नाम्सामीलाई आमाले

भनिन्, तिमी सिमलको रुखमाथि सात तलामा चडेर टुङ्ग बनाउनु, सातवटा काँडाबनाएर बस्नु र एउटा काँडा चाहि बिषालु बनाउनु । यसरि तिमी सात हाँगामाथि चढेर बसिरहनु। केसामीले आएर तिमीलाई मार्छु, खान्छु भन्यो भने कसरि मलाई खान्छौ ? लौ आएर खाउ भनि जवाफदिनू । म यहा घर वसि बसि तिमी दुइको आयुको विचार गर्नेछु। बावरी फूल ओइलिएछ भने केसामी मेरछ र सेकमुरी फूल मरेछ भने नाम्सामी मरेछ भनि थाहा पाउने छु। केहिदिनपछि ति दुई दाजु-भाईले जंगलमा शिकार खेल्नजाने बन्दोबस्त मिलाए तर नाम्सामीले आफ्नो दाजुको दुष्ट व्यवहार थाहा पाएपछि अघिबाटै जंगलगई एउटा सिमलको रुखको सात तला हाँगा माथि टुङ्ग बनाइ बसे । तिनका दाजु केसामी अलिक ढिलो गरि सिमलको फेदमा आइपुगे। भाई नाम्सामीलाई सिमलको रुखंमाथि देखेपछि केसामी रिसले चुरमुरियो र नाम्सामीलाई मार्छु भनि पहिलो हाँगामा उफ्रे र नाम्सामीले पनि पहिलो काँड प्रहार गरे तर केसामीलाई चोटमात्र लाग्यो । केसामी फेरि उफ्रे नाम्सामीको दोश्रो काँडको चोटले भुइमा खसेन/यस्तै किसिमले केसामीले तिन, चार, पाँच, छ, सातपल्ट उफ्रिदैगए, नाम्सामीले पनि सातौपल्ट काँडको प्रहारले केसामीलाई भुईमा गिराईदिए । केसामी फेरि आठौपल्ट उफ्रिन जाँदा नाम्सामीले त्यो अंतिम बिषालु काँडा प्रहार गरेर आफ्नो दाजु केसामीको ज्यान मारे। यस बखत घरमा तिगेनजोङ्नाले बावरी फूल ओइलिएको र सेकमुरी फूल ताजै रहेको आमाले देखेर थाहा पाइन् कि नाम्सामीले दाजु केसामीलाई मारे भन्ने तिगेनजोङ्ले चाल पाइन् । यस्तै एवम् रितिले शुरुमा दाजु भाईको रिसको उत्पन्न भएको हो भनि लिम्बुहरुको मन्धुम्मा विश्वास गरिन्छ ।

**लेखक- क्याप्टेन गजधंन तिगेला खेवा**

# मानव उत्पति र किरात वंश

## मानवको अर्थ र पहिलो मानव



कमल प्र. तिगेला (लिम्बू)

मानव विकासको क्रममा मानव के हो ? मानवका पुर्खा र पहिलो मानव को थिए ? पहिलो मानव अवशेष कहाँ फेला पर्‍यो ? भन्ने विषय माथि विचार विमर्श गर्न भन्दा अगाडि मानव शब्दलाई केलाएर हेरौं । नेपाली वृह्त शब्दकोषमा मानवको अर्थ मनुका सन्तति, मनुष्य वा मानव, स्त्री मानवी, मनु संग संम्वधित, मनुको वंशमा उत्पन्न भएको * भनि उल्लेख गरिएको छ। त्यस्तै दर्शनशास्त्र शब्दकोषमा "Man" one of the main concepts of existentialism(q.v) introduced by Headgear (q.v.). The German term of "M" serves as a subject in the definite personal sentences. According to Headgear, the stay in the word of "M" is manifested in the universally recognized principle of behavior, Moral standers, conquled and materialised formed of language and thoughts etc."* भनी उल्लेख गरिएको छ । The Oxford Senior Dectionary मा Man: " :Human being a creatur distingushed from other animals by superior mental develoment, mainkind" भनि लेखिएको छ । यस्तै International Thesaurus of quatation मा Rhada Thomas Tripp काअनुसार मानवको परिभाषा " A man is a means:

what amputated, leaves a widow" भनेका छन । विधि शव्दाबली Legal Glossary मा " An adult male human being ." भनी उल्लेख गरेका छन् ।

यसरी मानवलाई विभिन्न तवरले अर्थ्याए पनि अन्ततः मानव एक त्यस्तो बिकसित एवं चेतनशिल प्राणि हो जुन प्राणि बौद्धिक रुपमा अरु प्राणि भन्दा उच्च स्थानमा रहेको छ। मानवका पुर्खा र पहिलो मानवको वारेमा वा पहिलो मानव कहा जन्मियो भन्ने विषयलाई केलाएर हेर्ने हो भने विभिन्न धर्मशास्त्रहरुमा पहिलो मानवको बारेमा छुट्टा छुट्टै रुपमा उल्लेख भएको पाईन्छ। हिन्दु धर्मशास्त्र अनुसार मनुलाई पहिलो मानवको रुपमा लिएको पाइन्छ । किरात राईहरुले सुन्निमा र पारुहाङलाई, पहिलो मानवको स्थानमा दिए भने लिम्बूहरुले पोरोक्मीभा र यम्भाक्मिभालाई पहिलो मानवको रुपमा लिए। इसाई धर्मशास्त्र वाईवलमा लेखिए अनुसार आदम र हब्बा नै इश्वर सृजित् पहिलो मानव थिए। पहिलो मानव वा प्राक:मानवका सम्वन्धमा विद्वानहरुको मत भिन्नता रहेको छ । मानव अवशेषका संवन्धमा अध्ययन गर्दा सन् १९२४ मा एक मानव खोपडि पाईयो । अफ्रिकाको वेचुआलैण्ड क्षेत्रको आसपास पर्ने टांग्स नामक ठाउँको एउटा गुफा भित्र २० लाख वर्ष पुरानो वाल प्राणिको खोपडी भेट्याइयो । यसलाइ टांग्सएप नामले चिनिन्छ । विद्यवानहरुका अनुसार "टांग्सएप" नै पहिलो मानव थिए । यो आज सम्म पाईएका मानव अबशेषहरु मध्ये सव भन्दा पुरानो मानिन्छ । "टाग्सएप" को शाब्दिक अर्थ टाँग्स नामक ठाउँमा पाईएको बाँदर र मानव नछुटिने तर पुच्छर भने नभएको प्राणि हुन आउँछ । जिव अवशेषविद्यहरुले यो टांग्सएप मानिस जस्तै उठेर हिड्न सक्ने अनुमान लगाए । यो वाल प्राणि वा खोपडि छ वर्ष भन्दा माथिको भने नभएको कुरा विद्यवानहरुको राय छ ।

## मानव उत्पति र खेवा वंश

### मानव उत्पति

विद्यवानहरुका अनुसार मानिसको उद्‌गम (उत्पति) स्थल अफ्रिकाको भुमध्य् रेखाको आसपास रहेको थियो। अफ्रिकामा सुखा खडेरी लागेपछि तालहरु सुक्न थाले । जंगल क्रमश: मरभुमीमा परिणत हुन थाले पछि मानवको उदय भएको थियो । तीन करोड बर्ष भन्दा अगाडि स्तनपायी जीवहरुको एउटा वर्ग छुट्टियो । यो जीव पाँच करोड वर्ष अगाडि लेमुर नामको स्तनपायी जीव थियो । जुन जीवका ३२ वटा भन्दा बढि दाँत र नङ सहितका औंलाहरु थिए । यो जीवको बुढी औला हातको पंजातिर अलिकति वंग्याउन सकिन्थ्यो । यो जिवले किरा फट्याङग्रा र फलफुल खाने गर्थ्यो यसवाट छुट्टिएको प्रवर्ग अन्तत: वादरको रुपमा देखा पर्‍यो । डेड करोड वर्ष पछि मरुभुमिकरण भएका जमिनमा वातावरण चिसो भई अफ्रिकावाट २० केजि तौल भएको रामापेथिक नामको जीव देखा पर्‍यो । यो जीव दुई खुट्टाले हिडने गरेको कुरा वैज्ञानिकहरुले अनुमान लगाए । अनुहार चौंडा र टम्म दाँत भएको यो जीव एक करोड वर्ष अघि दुईवटा जातिमा विभाजित भयो । एउटा जाति आधुनिक वनमान्छेको रुपमा विकसित भयो र अर्को जाती मानवको प्राचिन वा आदिम पुर्खाको रुपमा विकसित भयो । तर यो जीव ८० लाख वर्ष अघि लोप भयो । जिव अवशेषको अध्ययन गर्ने क्रममा आजको २० लाख वर्ष अगाडि थुप्रै जीव अवशेषहरु पाईए । जसमा अफ्रिकाको बेचुआलैण्डमा वाल मस्तक पनि पाइयो यो आधारमा मानवको उद्‌गमस्थल व अफ्रिकालाई लिन सकिन्छ र मानवको उत्पति अफ्रिकाबाटै भयो भन्न सकिन्छ ।

### किरातहरुको उत्पति र भाषामा विभाजन

सरजोन हमिल्टनले आफ्नो पुस्तकमा "किरात बंश मंगोल जाति मध्ये एक हो र उनीहरुको पुरानो बासस्थान अफ्रिका स्थित फारसको

खाडीको उत्तरी मैदान हो जसको नाम सिनार थियो । शिनारलाई सुमेरु पनि भनिन्थ्यो । यो भनाईलाई हेर्ने हो भने किंरातहरुको उद्‌गम (उत्पति) स्थल वा उत्पतिको थलो अफ्रिका स्थित सिनार प्रदेश लाई लिन सकिन्छ। वैज्ञानिकहरुले पनि अफ्रिकाको सिनार प्रदेशलाईनै मानवको उद्‌गम (उत्पति) स्थल मानेका छन् । यसरी नै पुरानो बाईवलमा "परम प्रभुको दृष्टिमा शक्तिशाली सिकारी थिए र तिनको राज्यको शुरु बावेल, एरेक, अक्कुद र कल्ने भयो, जुन शिनार देशमा पर्दछन त्यहि देशबाट अश्शुर देशमा गए। यो शक्तिशाली शिकारी किरात पुर्खालाई लिन सकिन्छ ।

शिनार देशमा मानव जातिमा भाषाको विभाजन भएको कुरा इशाई धर्मशास्त्रमा उल्लेख गरिएको छ । जहाँ भनिएको छ " मानिसहरु पूर्वतिर सर्दै जाँदा शिनार देशमा एउटा मैदान भेटाएर त्यही बसोवास गरे तब आपसमा तिनीहरु भने लौ हामीहरुले इटां बनाएर पोलौं र हामी आफ्ना निम्ती एउटा सहर र स्वर्गको टुप्पा सम्मै पुग्ने एउटा धररा बनाएर आफ्नो नाउँ राखौं । नत्रता हामीलाई पृथ्वी भरी छरिन पर्नेछ । मानिसको सन्तानले वनाई रहेको धररा हेर्न परम प्रभु तल ओर्लनु भयो । अनि भन्नु भयो ति सबै एउटै भाषा भएको एउटै जाति रहेछ। इश्वरको भाषामा खलल पार्ने इच्छा भयो र खलल पारी दिनु भयो जसको कारण त्यो धररा वनाउन छोडी दिए र पृथ्वी भरी सबै मानिसहरु तितर वितर भए ।" यसरी सो धर्मसास्त्रमा लेखिए अनुरुप सिनार प्रदेशबाट बिभिन्न भाषा भाषीमा बिभाजित भएको पाईन्छ ।

### किरात शब्दको उत्पति

किरात पुर्खाहरु टाईथिस र युफ्रेटिस नदिको किनारमा बसोबास गर्दै हेमन्त भुमीपछि शिलान्त भुमीको तटमैदानमा बसें। जहाँ रेशमको खेती गर्ने मानिसलाई 'किरेत' र कपडा बुनेर बेच्ने मानिसलाई "किराती"

भन्दथे । किरात शब्द करेनी, किरिएत, किरजाथ शब्दको अपभ्रंस भई बनेको शब्द हो । यसको अर्थ भुमध्य प्रदेश हुन्छ । मोवायट भाषामा गठ वा शहर हुन्छ । त्यस्तै कलकत्ता वासी भएकाले कलाटी, कलैटी र किराती कहिएका हुन् ।

इशाको एघारौ शताब्दी सम्म कागंडा उपत्यकाको बैजनाथलाई किरग्राम भनिन्थ्यो । किरग्राम र किर शब्द किरातको छोटकरी रुप हो ।

किरातहरुको मुल निवासस्थल अघिदेखि हिमालयको दक्षीण पूर्वीय खण्डमा भएको अनुमान गरिन्छ । कारण यसै प्रदेशदेखि आजसम्म चिरायतोको ठुलो निर्यात हुन्छ र अमरकोषमा उल्लेख भए अनुसार चिरायतोको एक नाम किराततिक्त पनि हो । किरात शब्द किरवा शब्दको अपभ्रंस हो । यसरी किरात शब्दको उत्पतिका बारेमा बेग्ला बेग्लै अनुमान रहेको छ । किरात शब्द वास्तवमा किर, किरावा, किरियट, किजारथ, कलैती शब्दको विकसित रुपहो । जसबाट मंगोल राजाका नाती वा हालका किरातीहरुका पुर्खा किरात इडवाको नाम राखियो । कालान्तरमा किरात इडवाका सन्तानहरुले आफुलाई किरात भन्न थाले । यसरी किरात शब्दको उत्पति भयो ।

## किरात राज्य र राज्य बिस्तार

किरात राज्य र राज्य बिस्तारको कुरा गर्दा किरातहरुले जहा किरातहरुको राज्य स्थापना वा किरातहरुको पुर्खाहरुको उदय भयो सोही स्थानदखि राज्य कायम भएको पाइन्छ । अफ्रिकाको सिनार देशमा किरात पुर्खाहरु देखा पर्नु भन्दा अगाडि डाबल, एरेक, कुलेनमा राज्य गरे जुन सिनार देशमा पर्दथ्यो । कालान्तरमा सिनारमानै राज्य कायम गरि धेरै वर्षसम्म शासन गरे । सिनारबाट अश्युर देशमा गए र नीनवे, रहोवतीर र कालह शहरहरु कब्जागरी राज्य बिस्तार गरे । नीनवे र कालह बिच रेसन शहरलाइ राजधानी बनाएका थिए ।

# मानव उत्पति र खेवा वंश

मेसोपोटामिया हालको इराक, बेबिलोन, टाईग्रस र युफ्रेटिस नदिका किनारहरुमा राज्य कायम र विस्तार गरि राज्य विस्तार गर्ने क्रममा पर्सियाका सुनानी राजासंग युद्ध गरेको पाइन्छ। किरात पुर्खाहरु सीमा रेखाको लागि लडेको र जितेका सिमानामा खोपीएको ढुङ्गा गाडेको पाइन्छ। केहि विद्वानका अनुसार अफ्रिका महादेशका कुश देशमा पनि केही किरात पुर्खाको राज्य थियो। कुश देशमा स-साना गरि राज्य विस्तार गर्दै आए। त्यसैले किरातहरुले हाल पनि आफूलाई काशी गोत्र भन्ने गर्छन। १४ औं पिढीका राजा हाङग लुइहाङको पालामा सिमान्त भुमीको पश्चिम भागमा पर्ने गन्धर्वी देशको दानव देशका राजालाई हराई गन्धर्वी राज्यमा पनि आफ्नो अधिकार कायम गरे। यो राज्य विस्तार गर्नु पुर्व सिमान्त भुमीमा किरात पुर्खाहरु राज्य गर्दथे। त्यस्तै हेमन्त भूमीमा नकाशुर, दानाशुर, महिषाशुर र किरातशुर नामले शासन गरेको पाइन्छ। यता ११ औं १२ औं शताव्दीमा किरातहरुले काङ्ग्रा उपत्यकामा राज्य गरेको पाइन्छ। जहा आर्यहरु कुश पर्वत पार गरेर सातशिन्धुमा फैलंदा किरातमरुसंग युद्ध भएको थियो। ऋग्वेदका अनुसार आर्यहरुले किरात जातिहरुसंग संघर्ष गर्नु पर्‍यो। यो समयमा आर्य र अनार्य बिच ४० वर्षसम्म युद्धभएको पाइन्छ। कांगडा उपत्यकामा आर्यहरुले राज्य लिएपछि किरातहरु सतलज उपत्यकामा आएर बसे। यो समयमा आर्यहरुले किरातीहरुलाई राक्षस दैत्यको रुपमा उपनाम दिई किरातकालिन इतिहास सबै लोप गराएको पाइन्छ। सतलज उपत्यका कर्णाली प्रदेशको पश्चिम भागमा पर्दछ। नेपालको पुरानो वंशावली अनुसार किरातहरुले लिच्छवीहरु भन्दा अघि काठमाण्डौ उपत्यकामा राज्य गरे। कर्कपेट्रिकले आफ्नो पुस्तकमा ३० किरात राजाहरुको नाम उल्लेख गरेका छन्। केही विद्वानहरुका अनुसार लिच्छवीको आगमन पछि किरातहरु अन्यत्र गए। कालान्तरमा आएर किरातहरुले पुनमा

वल्लो किरात, माँझ किरात र पल्लो किरात भनी राज्य बिस्तार गरे भने पश्चिममा पृथ्वीनारायण शाहको एकिकरण पूर्व २२ से २४ से राज्यको रुपमा रहेका थिए। किरातहरु बसोबास गरेको प्रदेशलाई कुनै समयमा "नौ लाख किरात" पनि भनिन्थ्यो।

## जापानी र चीनियाँ पनि किरात

जापानी, चीनिया र किरातहरु विचको भाषिक समानाताका आधार मा पनि एकै यी जाति एउटै बंशका हुन सक्छन भनि अनुमान लगाउन सकिन्छ। यसमा सु. प्रेमबहादुर मानोहाङ र भुपेन्द्र शर्माले संक्षिप्त नेपालको इतिहासमा उल्लेख गरे अनुसार हेमन्त भूमीमा अथ्युर बंशबाट एक मंगोल नामक राजाको जन्म भयो। राजा मंगोलका तीन भाइ छोराहरु निम्न बमोजिम थिए। जसबाट बंशको आधारमा जापानी, वर्मेली, चीनिया पनि किरात हुन वा किरात बंश भित्र पर्दछन भन्न सकिने आधार रहेको छ।

(क) योबोईङबा - जापानी, वर्मेली, श्याम कोचिन

(ख) थोवोइङवा - चीनिया, भोटिया, कोरियन

(ग) मुनाइङवा - राई, लिम्बु, गुरुङ्ग, मगर, थारु इत्यादि

हेमन्त भुमीको गर्मी खप्न नसकको र सन्तान बढ्न नसकेकोले मंगोलका ३ पुत्रका सन्तान हेमन्त भुमी छाडि अन्यत्र सर्ने सल्लाह गरे। योबो इङवाका सन्तान जापानी, श्याम, वर्मा, कोचिन जातीमा विभाजित भएर राज्य विस्तार गर्दै गए। माइला भाइ थोवोइङवा सन्तान उत्तरतर्फ चीनिया, मङोलियन, चावा, तुक्पा, भोटिया जातीमा बिभाजित भइ रहे। मंगोलका कान्छा छोरा मुनाइङवाका पुत्र किरात इङवा हेमन्त भूमीबाट पश्चिम तर्फ हिन्द महासागरबाट सिमान्त भूमीमा आई राज्य बिस्तार गरे।

**सिमान्त भूमीमा किरात ईङवाका दश छोराहरु:-**

(क) यकतुम्वा- राई, लिम्बु ( मुख्य जाती र अन्य उपजातीहरु विभाजन भई पल्लो किरात, माझ किरात र वल्लो किरातमा वर्तमान अवस्थामा यक्तुम्वाका सन्तान बसोबास गर्दै किरात इङवाको सन्तान भएकोले आफुलाइ "किरात" भनि घोषणा गरे ।)

(ख) अप्लीवा- आठपरिया जातीको रुपमा हाल चिनिन्छ । यो जातीको मुख्य बसोबास धनकुटामा रहेको हो ।

(ग) याख्खाबा- हाल याख्खावाका सन्तान मुल जाती याख्खावा र अन्य विभिन्न उपजातीको रुपमा विभाजित भई संखुवासभा, तेह्रथुम, धनकुटा, पांचथर जिल्लाहरुमा छरिएर बसेका छन् ।

(घ) लुङफेवा- लुङफेवाका सन्तान हाल लहरुङ्ग जातले चिनिन्छन् । तर हाल आएर लहरुङ्गहरुले राई लेख्न थालेको पाइन्छ ।

(ङ) याङफेवा- यसका सन्तान याङफु जातीले हाल चिनिन्छ । तर यो जातीको जनसंख्या एकदम कम रहेका छ ।

(च) सुहाचेपा- सुनुवार, ज्यापु, चेपाङ्ग जातीले हाल सुहाचेपाका सन्तानलाई चिनिन्छ । सुनुवारहरुले पनि राईसंग समीकरण गरी केहिले राई लेख्न थालिसकेका छन् । चेपाङ्ग जाती अति दुर्लभ जातीको रुपमा रहेका छन् ।

(छ) थोकलेपा- यो जातका सन्तान हाल थाकल, पोकल, थकाली भएर नेपालको पश्चिम भू-भागमा रहेका छन् ।

(ज) गुरुक्पा- यो जातका सन्तान हाल गुरुङ्ग नामले प्रख्यात छन् । नेपालको एकिकरण पूर्व यो जातिले २२ से २४ से राज्य कायमगरि राज्य बिस्तारगरी बसोबास गरेको पाइन्छ । गुरुङ्गहरुले आफुलाई किरात वंशमा नपर्ने दावी गरेता पनि गुरुङ्ग जातिका विद्वान डा. हर्कबहादुरले गुरुङ्ग जाति किरात परिवार भित्र पर्दछ भनि आफ्नो

पुस्तकमा उल्लेख गरेका छन् । तसर्थ यो जाति पनि किरात इङ्वाकै सन्तान वा वंशज बिच पर्ने भएकोले किरात भन्दा अत्युक्ति नहोला ।

(झ) थाङदाङवा- यस जातका सन्तान हाल नेपालको दक्षिणी भु-भागमा थारु, दनुवार जातीले प्रख्यात छन् ।

(ञ) मगप्पा- यो जातका सन्तान हाल मगर जातिले चिनिन्छ र नेपालको पश्चिमी भु-भागमा ठुलो जनसंख्या र भु-भाग ओगटेर यो जाती विभिन्न उपजातिहरुमा विभाजित भईरहेका छन् । मगर जातीलाई सेना र प्रहरीमा शाहकाल देखि यता प्रवेश गराइएकोले यो जातीको उपजातिहरु क्षेत्री जातसंग धेरै मिल्न आउँछ । यो जाति पनि किरात वंश भित्र पर्छ ।

उक्त १० भाइका सन्तानमा नेवार र तामाङ्ग समेटिएको छैन । विद्वानहरुले तामाङ्ग थोवोङवाका सन्तानका एक उपजातीको रुपमा लिएका छन् र यो तामाङ्ग जाति तिब्बतीयन र भोटिया जातिहरुसंग नजिकको संबन्ध रहेको पाइन्छ भने नेवारहरु चीनिया, तुक्पा, चावा जातिहरुसंग नजिकको संबन्ध राख्छन् ।

निष्कर्षमा नेवार र तामाङ्ग जाति पनि किरात जाति भित्र पर्दछन् । कारण हाल मंगोलका तीन छोरा मध्ये कान्छा छोरा मुनाङवाका पुत्र-किरात इङवाको सन्तानले मात्र आफुलाई किरात भनी दावी गरेता पनि वंशजको आधारमा हेर्नेहो भने मंगोलका जेठा छोरा योवोङवाका सन्तान जापानी, श्याम, कोचिन, बर्मेली र थोवोइङवाका सन्तान चीन, भोटिया, तुक्पा कोरीयन, फिलिपीन्स, मलेशियन जातीका रुपमा रहेको छन् र तामाङ्ग, नेवार इत्यादी पनि किरात परिवार वा किरात वंश भित्र पर्दछन् ।

## दश लिम्बु र खेवा वंश

लिम्बु जाति निश्चित रुपमा मगोलका सन्तान वा मंगोलका कान्छा छोरा मुनाईडवाका पुत्र किरात इङवाका दश भाइहरु मध्ये जेठो भाई यक्तुम्बाका सन्तान भित्र पर्दछ । यक्तुम्बाको दुई भाइ छोरामा एक भाइका सन्तान राई जाति र अर्का लिम्बू जातिमा विकाश भएको पाइन्छ । लिम्बु जातिको घना बसोबास भएको जिल्लाहरु पांचथर, ताप्लेजुङ, तेह्रथुम, संखुवासभा, सुनसरी, मोरङ्ग, झापा, धनकुटा मुख्य रुपमा पर्दछन् । पल्लो किरातको नामले चिनिने अरुण पूर्व र मेची नदी पश्चिमको भू-भागलाई लिम्वुवान भनिन्छ । यता नेपालको राष्ट्रिय जनगणना २०४८ र विभिन्न सोधपत्रमा उल्लेख भए अनुसार लिम्बु जातीहरु नेपालको ७३ जिल्लामा बसोबास गर्दै आएको पाइन्छ । यता भारतको सिक्किम, दार्जिलिङ, आसाम, मणिपुर, कालिङपोङ, पश्चिम बंगालमा पनि लिम्बुहरुको ठुलो बस्ती रहेको पाइन्छ ।

लिम्बुलाई याक्थुङवा नामले पनि चिनिन्छ । दश भाई लिम्बुहरु (काशी गोत्र ५ जना ल्हासा गोत्र ५ जना) नेपालको पूर्वी भाग पल्लो किरात आई लिम्वुवान कायम गरी राज्य गर्न शुरु गरे । दश लिम्बुहरुले आफ्नो राजधानी पांचथर जिल्लाको सदरमुकाम फेदेन स्थित "आँबेपजोमा खाम्हेत्लाङमा सुम्हालुङ्मा" नामक स्थानमा आफ्नो राज्य स्थापना गरि बसोबास शुरु गरे । यो स्थान फिदिम बजारको नजिक रहेको छ । दश लिम्वुहरुको साथमा तीन धर्म गुरुहरु पनि रहेकाथिए । ती दश लिम्बू र तीन धर्मगुरुको नामावली निम्न बमोजिम रहेको छ ।

## दश लिम्बू

(१) थोसोईङ्ग काङलाईङ हाङ

(२) थिङदाङगो सावारो हाङ

(३) थोसोदिङ हाम्लेंवा सावारो हाङ

(४) थोदिङ ताङसाक सावारो हाङ्ग

(५) मुगुप्लुङमा लाङसोदिङ सावारो हाङ

(६) मोगुपलुङमा खाम्बेक सावारो हाङ्ग

(७) योक्फोदिङ सावारो हाङ

(८) योक्फोदिङ सावारो हाङ

(९) योक्फोदिङगिघाङ लाईङगो हाङ्ग

(१०) तोतोली तोइङवो हाङ्ग

**तीन धर्म गुरुहरु:**

(१) फेजिरी फेदाङमा (विजुवा)

(२) साम्बाहाङ एप्लीहाङ साँवा (पुरोहित)

(३) साप्मुन्धुम येप्मुन्धुम (न्यायाधिश)

त्यस समयमा नेपालको पूर्विक्षेत्रलाई फेदाप भनिन्थ्यो र यो प्रान्तमा दस लिम्बूको आगमन पुर्व आठजना अपुंगी किराती राजाहरुले राज्य गरेका थिए । जसलाई सावागेन एतहाङ भनिन्छ । ति राजाहरुको नाम यसप्रकार छ ।

१) होङदेन हाङ (छोङदेन हाङ आठपरिया) २) यकेत्हाङ

३) चासवीहाङ ४) लारासो पांगवोहाङ ५) खेसिवाहाङ

६) एकांसोहाङ ७) खादिहाङ ८) ईमेहाङ

माथि उल्लेखित दश लिम्बु (सरदार)हरु र फेदाप प्रान्तका यी ८ अपुंगीराजाहरु बिच युद्धभइ युद्ध पश्चात सम्झौता गरी पुन: बनेका दश लिम्बु राजा तथा सरदारहरुका नाम र क्षेत्र यस प्रकार छ ।

(१) साम्लुप्लि साम्वाहाङ- ताम्वाखोला यक (गड)

(२) ताम्पेसो पेरुहाङ्ग- तेह्रथुम, थलायक (गड)

(३) थोक्तोक्सो आङवोहाङ्ग- आठराई-पोमाजङ यक (गड)

(४) सेङसेङगुम फेदाप हाङ्ग-फेदाप, पोक्लावाङ यक (गड)

(५) थिन्दोलुङ कोयाहाङ्ग (खोक्याहाङ) याङरुप यक (गड)

(६) शेसेन्ने सेरिङहाङ्ग-मेवा खोला, येतिङदे यक (गड)

(७) येनाङसो पापोहाङ्ग- पानथर, फेदेन यक (गड)

(८) थाक्लुङ पितुमहाङ- छथर ताक्लुङ यक (गड)

(९) सोइयाक लाधोहाङ्ग-चौविस, साँगुरी यक (गड)

(१०) इमेहाङ्ग- चारखोला, इलाम यक (गड)

यि दश लिम्बुहरुले अठारौ शताब्दिमा नेपाल एकिकरणको शिलशिलामा गोरखा शैन्यसग १२ वर्ष युद्ध गरेको थिए । १२ वर्षको युद्धपछि गोरखाका राजा पृथ्वीनारायण शाहले एक सन्धीको प्रस्ताव राखी प्रत्येक जिल्लमा शासन गर्न र न्याय गर्न सक्नेगरि लिम्बुहरुलाई राज्य समर्पण गरे तर  कर, हत्या र गोवध (गाइमारा) संवन्धि मुद्दा गोरखाका राजाले हेर्ने सन्धीपत्रमा प्रस्ताव राखियो र लिम्बुहरुले सो सन्धीको स्वागत गरे । यी दश लिम्बू राजाहरु मध्ये छथर ताक्लुङ यक( गड) मा राजा थाक्लुङ पितुमहाड छथरेहरुका राजा थिए यीनै राजाका सन्तान हाल खेवा जाति भित्र ६ वटा उपजातिमा विभाजित भई तेह्रथुम र धनकुटा जिल्लामा बसोवास गर्दै आएका छन र खेवाहरुको वंशावली पछिल्लो अध्यायमा बृस्तीर्त् रुपमा दिईएको छ ।

सन्दर्भ सामाग्रीहरु:-

१. नेपाली वृहत शब्दकोष, २. लिम्बुवानको ऐतिहासिक अध्ययन - शिवकुमार श्रेष्ठ, ३. *Nepal and the Gorkha's Ministry of Difference London,* ४. संक्षिप्त नेपालको इतिहास- सु प्रेमवहादुर माबोहाङ्ग ५. किरात वेद ६. वाइबल ७. ऋग्वेद ८. कौटिल्यको अर्थशास्त्र ९. हाम्रो समाज एक अध्ययन - जनकलाल शर्मा १०. मानवको उदय (ऐतिहासीक रुपरेखा)- सुवर्ण कयाली ११. जनजाति मञ्च (अंक १ वर्ष १) १२. विश्व इतिहासको एक झलक-जवाहरलाल नेहरु, १३. मनुस्मृति १४. महाभारत (संक्षिप्त) १५. विश्व इतिहास - रामप्रसाद त्रिपाठी १६. समाजशास्त्र र मानव शास्त्रको परिचय- रेशराज अधिकारी १७. किरात सम्बन्धि केही चर्चा -देवदास राई १८. *Dictionary of Philosophy,* १९. *International Therasausus of Quotations-Rhaslo Thomas,* २०. यलम्वर-यलुङ किरात, २१. *Legal Glossary,* २२. किरात सभ्यता - मुस्कान पाङबाङ, २३. *Senior Oxford Dictionary* २४. किरात इतिहास - स्व इमान सिं चेमजोङ २५. मगरात इतिहास - एम. बी. थापा मगर

●(प्राविधिक कारणले फुटनोट प्रत्येक पेजमा राख्न नसकिएकोमा क्षमा-लेखक: कमल लिंगेला)

# खेवाहरुको उत्पतिको किंवदन्ती

सत्ययुगमा एउटा अपुत्री वालक पोङ्गेनदिङ्को उत्पत्ति भएको थियो । उनि त्यस अवस्थाको शुन्य धरातलमा जीवन निर्वाह गर्न सृष्टिकर्ताको चक्र भएको हुँदा सदादिन शिकारीको रुपधारण गरि हिड्न वाध्य हुनु पर्दथ्यो । त्यसै अवस्थामा पोङ्गेनदिङ् बालक जंगल घुम्न जाँदा वाटोमा एउटा वन कुखुरो (खेवाको फुल बाटोमा फेला पारे । त्यो फुललाई उनले साथमा राखी सुत्ने गर्दथे ।

समय वित्दै गयो केहि समय पश्चात् त्यो फुलवाट वन कुखुरा (खेवा) को वच्चा पैदा भयो । त्यो वच्चा समयको प्रवाह संगसंगै दिन प्रतिदिन वढ्दै गयो । अन्ततोगत्वा त्यो वच्चा भाले कुखुरा भयो । त्यो भालेले ती वालकलाई भन्नलागे, ए मनुष्य ! तिमिले मेरो निम्ति पालन पोषण र सुरक्षा गरी मेरो उमेर पुऱ्याई दिएकोमा तिम्रो यस्तो अवीस्मरणीय गुण मैले तिर्नुपर्छ । अव यस शुन्य संसारमा वसन्तको हरियाली वनाउनु पर्छ । व्यवहारिक जीवन यापनको शुरुआत गर्नुपर्छ । त्यसको लागि तिम्रो विवाह गर्नुपर्छ भनि अनुरोध गरे । त्यो वालक पनि त्यस समय सम्ममा समयको प्रवाह संगै युवा अवस्थामा पुगि सकेका थिए । त्यस्तो विवाहको कुरा सुन्दा ति युवालाई आश्चार्य लाग्यो । जवकि यस शुन्य, उजाड धरातलमा कसोगरि विवाह गर्ने ? केटि कहाँबाट ल्याउने ? जस्ता प्रश्नहरु ती युवालाई कौतुहल्ताकै विषय वन्यो । यो सम्भव नहुने कुरोहो भनि भालेलाई भन्नलागे । युवाको त्यस्तो कौतुहल्ता सुनेपछि त्यो भालेले भन्नलागे तिमि यसै ठाउँमा वसिरहनु म केटिको खोजिमा जानेछु भनि उडेर वेपत्ता भएछ । अव ती युवा शुन्य धरातलमा एक्लो भयो । उनी ज्यादै चिन्तित भए । मेरो जीवन साथी भएर वसेको भाले आज छोडेर वेपत्ता भयो अब के गर्ने कसो गर्ने आदी इत्यादी कुराहरुबाट

छट्पटिदै रहंदा वस्दा केहि समय विति सकेको थियो । केहि दिन पछि त्यो भाले उडेर त्यसै ठाउँमा एक सुन्दरी कन्या लिएर आईपुग्यो । यस्तो आश्चर्यजनक काम देखेर ति युवा अति नै चकित भए । त्यो भालेले युवालाई कन्यातिर औल्याउदै भने, हेर मनुष्य तिम्रो विवाहको निमित्त, तिम्रो दाम्पत्य जीवनकोलागि यस शुन्य संसारलाई वसन्त छाउनको निम्ति , यस शुन्य धरातलमा व्यावहारिक जीवन यापनको निम्ति एकजना कन्या ल्याई दिएको छु । अव उनीसग तिम्रो विवाह गर्नुपर्छ भनि विवाह कर्मकाण्ड समेत गरि दिए । विवाह कर्मकाण्ड समापन पछि त्यो भालेले भन्नलागे हेर मनुष्य ! तिमिले गरेको गुण अविष्मरणीय छ । तिमिले मप्रति गरेको गुण नै आज तिमिलाई सुम्पदै छु । अव म तिमिहरुवाट विछोडीदैछु, टाढा जादैछु भन्दै आफ्नो वाटो लाग्ने तरखरमा थिए । बीचरा ती युवा युवतीलाई दुःख लाग्न थाल्यो । दुखित भई रुदै कराउदै भन्नलागे तिमि हामी धेरै समयसम्म वसेका, त्यति मात्र नभएर हाम्रो विवाह समेत गरिदिएर एक कर्तव्यनिष्ठ माता पिताको व्यवहार गरि दियौ त्यसैले तिमि जान हुदैन भनि विलौना गर्दै जान नहुने अनुरोध गरे । यस्तो कुरा सुने पछि भालेले भने हेर मनुष्य ! तिमिहरु चेतनशिल प्राणि हो । चेतनशिल प्राणि भएको नाताले नै यस शुन्य धरातललाई हराभरा वानाउने कर्तव्य तिमिहरुको जिम्मेवारी हो । तिमिहरु प्रति मैले गर्नुपर्ने मेरो कर्तब्य जे थियो मैले गरिदिए । अब मेरो ज्यादा तिमिहरुसंग वस्ने समय छैन । यदि तिमिहरुले मलाई हेर्न चाहन्छौ भने भोलिविहान मिर्मिरे उज्यालो हुने समयमा आकाशमा पूर्व तर्फ फर्केर हेर त्यससमयमा मेरो शिउर पुच्छर देख्नेछौ भनि त्यो भाले उडेर वेपत्ता भयो ।

जीवन भन्दा प्यारो साथि संगको विछोडको वेदनाले ति दम्पतिहरु भालेले छोडेको सन्देशलाई आत्मसाथगर्दै भोलिपल्ट विहान मिर्मिरे उज्यालोमा पूर्वतर्फ नजरलगाए साच्चीकै झर झराउदो सिउर पुच्छर

नमुनाभएको ताराभइ वसेको देखि उनिहरु अचम्मीत भई यीत भालेहोइनन्- देवता पो रहेछन् भनि त्यसदिन देखि त्यस दम्पितहरुले "हाम्रो कल्याणकारी भगवान" भन्दै त्यस तारालाई प्रार्थाना गर्नथाले। जससालाई आज हामि शुक्र नामको ताराले चिन्दछौ।

यसरि सत्ययुगमा नै शुक्र ग्रहले लुइचे वनकुखुराको भालेको रुपधारण गरि पोङ्गेन्दिङ् भन्ने बालकसंग सम्वन्धित रहि ति मानवलाई जीवन यापनको निमित्त वैवाहिक सम्बन्ध समेत गराई दिएकाले ति दम्पतिहरुले अव उप्रान्त संसारमा जति पनि पंक्षिहरु छन् हामी खाने छैनौ र हामिबाट कुनै शाखासन्तान भए तिनिहरुले पनि खानेछैन। खाएमा जीवन नष्टहोस नभए पनि तिनिहरुको बुद्धि विवेकमा आघात पुगोस भनि यी दम्पतिहरुले सत्य वाचा बन्धन गरे। यसरी खेवा पंक्षिबाट जीवन निर्वाहको मार्ग देखाईदिने गुणि आमा बावुको ब्यवहार गरेकोले हाम्रो थरनै "खेवा" राख्ने भनि त्यसदिन पोङ्गेन्दिङ्ले "खेवा" भनि थर किटान गरिदिएकोले सोही किंवदन्तीलाई आधारमानि खेवाहरु खेवाहै भनि विश्वास गर्दछन्।

वैवाहिक सम्बन्धको वावजुद केहि वर्षको अन्तरालमा पोङ्गेन्दिङ् खेवाको दुई पुत्रहरुको जन्मभयो। त्यस मध्ये जेठो छोरा माता पिताको परम भक्तभयो भने कान्छा छोरा दाजुको ब्यवहारको ठिक बिपरित भइ सानै उमेरंदेखि घमण्डि मुर्खभएकोले मातापिताको प्रतिज्ञा जतिथियो सम्पुर्ण कुराहरु आफ्ना छोराहरुलाई सुनाउने गर्दथे। जेठो छोराले आमावाबुको उपदेश सुनिरहन्थे भने कान्छा छोरा मातापिताको उपदेशलाई ख्यालै नगरी बस्दथे। शिकार मात्र गर्ने पेशाभएको हुँदा जंगलमा भएका अनेकौ पशुपंक्षिहरु शिकारगरि जीवन निर्वाह गर्दथे। भने पिता पोङ्गेनदिङ् र आमाबाट जंगका पशुपंक्षिहरु मध्ये खेवा (बन कुखुरा) लाई कहिल्यै नमार्नु र नखानु र कुनै अवस्थामा शिकार गर्नजादा शुक्र ताराको

प्रार्थाना गर्नु र भालेवासे पछिमात्र सायत गरेर बाटो लाग्नेगर्नु भन्ने उपदेश दिन्थ । तर ति उपदेश जेठो छोराले मात्र स्वीकार गर्दथ भने कान्छा छाराले ति उपदेशको इन्कार गरि आफ्नै विचार विवेकमा काम गर्दथे । मातापिताको आज्ञाकारि छोरा जहिले पनि माताताको उपदेश पालनगरि सोहि बमोजिम नै गर्नेगर्दथे भने कान्छा छोरा आफ्नो घमण्डतापुर्वक निर्धक्कसाथ भन्थे- "गर्ने छोरालाई जहिले पनि साइतनै हो । शुक ताराको प्रार्थाना गरे खान दिन्छर" भनि अपहेलना गर्थे । यसरि गर्दागर्दै समय वित्दै गयो ती वालकहरुको उमेरमा पनि परिवर्तन हुदै जवानिले छोपिसकेको थियो । एकदिन ति कान्छा भाइले माता, पिता, दाजुको समक्ष एउटा प्रतिज्ञागर्दै भने- हेर्नुहोस! आमा, वावु, दाजुहरुले दिउको ज्ञान, उपदेश मेरोलागि केहि हाईन । म जवान छु । मसंग लड्न सक्ने क्षमता पूर्णछ । त्यसकाण मेरोलागि कुनै भक्ति प्रार्थाना, सायत, हेर्नगर्न आवश्यक दखिन्न आमा वावुले गरेको प्रतिज्ञाको ठिक विपरित मेरो काम हुनेछु । तपाइहरुले गरेको प्रतिज्ञा र भक्ति कति सफल हुदोरहेछ । अवम बेलुकी पख सायत गरेर खेवा पंक्षिको शिकार गरेर विहान भालेको डाकमा घर आईपुग्नेछु, तपाइहरुको नखाने प्रतिज्ञा गरेको बनकुखुराको मासु खानेछु । यदि मेरो वाचा वन्धन अनुसार नभइ विहान भाले वास्ने समयसम्म घर आइनपुगे तपाईहरुले प्रतिज्ञा गरेको वाचा वन्धनले मेरो ज्यान नासियोस् नत्र भनेम हुने छैन भन्दै घरबाट साँझपखलाई सायतगरि आफ्नो धनुषवाण लियर बनतर्फ लाग्यो । शुन्य औंसीको रातले छाएको थियो घरवाट जतिटाढा गयो त्यतिकै अन्धकारले देख्न, सुन्न केहि छैन के कहाँछ के छैन उसले देख्न थाहपाउन सकेन रातले डाँडा काटिसकेको थियो । वनकुखुरा ल्याएर खाने उनको मनसाय चकनाचुर भयो । उनले गरेको कल्पना कल्पनातित्नै भयो । विहानि पख पूर्व दिशामा शुकतारा उदाई सकेको थियो । उज्यालोलो सास फेरिसकेको

थियो । उसले गरेको प्रतिज्ञा असफल भयो । उ घर फर्कन लाग्यो । फर्कदा बाटामा एउटा भालेदेखे उसले त्यसलाई वाण झिकेर उसको प्राणलिला समाप्त गर्ने तवरले प्रहारगरे । तर असफल भयो । प्रहार गरेको वाण भालेलाई नलागेपछि भालेले त्यो मनुश्यलाई भन्नलागे- हेर वावु! तिमिले जेगर्न चाहेका हौ ठिक काम गऱ्यौ । तिम्रा मातापिता प्रतिज्ञा नष्टगऱ्यौ । त्यसैलेगर्दा ममाथि तिम्रो जुन अपराधिपन आयो मलाई मार्नु र खानु यस्तो अपराधपुर्ण तिम्रो कार्यले यो संसारबाट तिमिले सदाको निम्ति पार हुनेछौ भनि त्यो भाले अल्पिएछ । त्यो मुर्ख छोराले भालेलाई त्यो ठाउ वरपर हेरे तर पाउन सकेन । त्यसरि भाले पाउन नसकेपछि उसको प्रतिज्ञा मुताबिक उनी घर आउन नसकि उनको प्राण विचवाटैमा गयो ।

भोलीपल्ट उज्यालो भयो कान्छो छोरा घर नफर्केपछि उनका मातापितालाई पिर पऱ्यो । ती मुर्ख छोरालाई खोज्न जेठो छोरालाई पठाए । खोज्दैजादा बिचबाटोमा कान्छा भाईको मृत शरिर मात्र फेला पारे । भाईको मृत शरिर बाटोमा देखेर दाजु निराशा भई भाईको लास तर्फ फर्केर भने- हेर भाई ! विहान पख साइतगरि हिडेको भए यस्तो हुने थिएनौ । आफ्ना मातापिताको उपदेश सुनेनौ जसको फल यसरी भोग्नु पऱ्यो भन्दै त्यो लासलाई छोडेर घर फर्के । भाईको सम्पूर्ण वृतान्त खवर लिई दाजु घरपुगे र सम्पूर्ण खवरहरु आमा वावुलाई सुनाए । आमा वावुले पनि हामिले सत्य ग्रहण गरेको प्रतिज्ञालाई उलंघन गरेकोले यस्तो भएको हो भन्दै आमा वाबुले पनि चित्त बुझाए ।

जेठो छोरा सदा सर्वदा भाले वासेपछि घरबाट साइत गरि हिड्ने गर्दथे । जुनसुकै अवस्थामा पनि उनले चिताएको कामहरु पुरा हुदै गएपछि विहानको समयमा शुक्तारा उदाएपछि सदा प्रार्थाना गर्ने गर्दथे ।

एकदिन पोङ्गेदिङ् खोवाका जेठा छोराले एउटा ठुलो युद्धको सामना गर्नुपर्ने भयो । जुनदिन तिनले शुकताराको प्रार्थाना गरि भालेको डाकलाई साइत गरि युद्ध भुमिमा लडाई गर्न गए । जसको फलस्वरुप उनले सम्पुर्ण विपक्षि शत्रुहरुको नासगर्न सफल भई युद्धबाट विजय प्राप्त गरे ।

यसै किंवदन्तीलाई आधारमानि हालसम्म ६ थरी खेवा (लिम्बु) हरुले पंक्षि खानेगरेका छैनन् । अपहेलित गरि पंक्षि खाएमा त्यस्ता ब्यक्तिहरुलाई उनीहरुको बुद्धि विवेकमा अवरोधहुने, विभिन्न रोगले ग्रसितभई जिवनलिला समाप्त हुने यस खेवा समाजमा विश्वास गरिन्छ ।

**लेखक- लोकेन्द्र तिगेला**

# "थाकलुङ् (ताकलुङ) यक परिचय

परिचय-: थाकलुङ् (ताकलुङ्) यक तथा कुकाप्मी "यक" (गढी) पोमेजोङ् खेवा लिम्बुहरुका मुख्य (प्रमुख) यक (गढी) हो । योठाँउ छथर सुदाप हाल तेह्रथुम ओखे गा.वि.स. वार्ड नं. ७ मा स्थित ठुलो ढुङ्गाको पहरा छ र कुकापमी "यक" पामेजोङ स्थल थाकलुङ् (ताकलुङ) देखि २ कि. मीं पुर्व दिशामा छ । खेवा वंशका पुर्खाहरु पुर्वकालमा नेपालको पश्चिमी क्षेत्रवाट बसाइ सराइ गर्दै जाँदा धनकुटाको लेगुवाघाट हुदै ओखे पोमेजोङ्मा बसोबास गरेकथिए भन्ने पुर्खाहरुका भनाइछ । पछिबाट बढदैजादा त्याहाबाट पश्चिमपट्टि सर्दै आए, गाइका बथानहरु चराउदै-चराउदै थाक्लुङ् डाँडामा आईपुगे र त्याहानै बसोबास गर्नको लागि गाईको पुच्छर समाएर ओर्लि झरेको हुनाले पित्तुम्मीहाङ पनि भन्ने गर्दथे । त्यस क्षेत्रको दक्षिणपट्टि ठुल्ठुला पत्थरका चट्टान र शुरुङहरु थिए । तर आजभोलि शुरुङहरु पुरिएकोछ र केहि ढाँड ढुड मात्र पाईन्छ । यस ढाँडको फेद ओढारमा पुरान गहनाहरु पाइन्छ , तत्काल

व्यापारिहरुले उत्खनन् (Excavation) गरि सबै पुराना पुराना गहानहरु सकाए ।

पछिबाट कृषियुगमा आएपछि पुर्खाहरु कमाइ खेतिगर्ने र ओढार छोडेर घर बनाएर बस्न थालेपछि त्यो ढाँडबाट केहि र कि मी तलभरि बस्ती बनाएर बसे । आँपका बगैंचा समेत लगाउन थालेका प्रमाण दस, बाह्रसय वर्ष पुरानो आँपकोरुख अझै मरेको छैन । कृषियुगमा आइपुगेपछि उनिहरु धेरै फैलिसकेका हुनाले एउटै वंशमा कुल कुटुम्ब



*थाक्लुङ (ताक्लुङ) खेवा लिम्बूहरुको यक (गढी)* फोटो : स्या. गजरधन

गर्न नहुने हुनाले त्यो क्षेत्रमा वंश छुट्याएको प्रमाण २०१२ साल सम्म ४ वटा पत्थरको शिलालेख गाडेका थिए, यस शिलालेख पत्थर ठडाएकाहरुलाइ मुक्तुम, लुङ्दुम, लेतुम् र चोङ्हिम्हाङ् नामकरण गरे र यसक्षेत्रलाई हाङ्सेम्मा भन्दछन् ।

हाङ्सेम्मा शिलालेख पत्थरहरु २०१३ सालमा ठूलो बाढि आएको हुनाले पैरोले सबै बगाएर लगेको हुनाले आज भोली केहि निशान (चिनो) छैन । हाङ्जिली हाङ्दुङ्बाको घर (दरबार) हाङ्सेम्माको पूर्व पट्टी

५०० मी. पुर्वमा केहि भग्न शेषहरु पाईन्थ्यो तर आज भोली भुक्षय (Erosion) लागेको हुनाले केहिपनि पाउन सकिन्न । खेवाहरुको यस्तो ऐतिहासिक स्थलहरु पुर्खाहरुले ध्यान पुर्याउन नसकेको हुनाले ऐतिहासीक स्थल नष्ट भयो ।

अब शिरीप रहेकोछ थाक्लुङ (ताक्लुङ) डाँडाको ठुलो पत्थरको ढिस्को । यो ढिस्को खासगरि खेवा लिम्बुहरुको महत्वपुर्ण पवित्र स्थल हो। तर कसै खेवा लिम्बुहरुले ध्यान दिएको छैन । यस चट्टानको दक्षिण पट्टि एउटा देवस्थल छ। यस देवस्थललाई आङ्लावाङ खेवाका सिंधोकोड आङ्खेवा मनहर्कको बाजेले १९० वर्ष अगाडि देवस्थल पुजा-पाठ गरि राम नवमी मेला लगाएको छ । योमेला थाकलुङ् यक्को पुर्वपट्टि सानु जमिनमा लाग्थ्यो । पानीको अभाव र सानु जमिन भएकोहुनाले गोद्रीलाल आङ्खेवाले वि.स. २०१६ साल देखि रामनवमी मेला थाकलुङ् देखि २ कि.मी. पश्चिम नागाईत्ला भन्ने ठाउँमा सारिएको छ। यो मेला तीन दिन लाग्छ आष्टमीको दिन सानु बजार, नवमीका दिन ठुलो बजार र दशमीको दिन अन्तिम मेला लाग्छ ।

अन्तमा खेवा लिम्बुहरु तिगेला, तुम्बा, माड्याक, मादेन्, चोङ्बाङ् र आङ्लाबाङ (आङ्खेवा) थर छन्। आपसमा एकै वंशका सन्तान् भएपनि एक आपसमा आन्तरिक विवाहवारी चलाउँछन् कारण हाङ्जीली हाङ्दुम्बाका सन्तान् (छोराहरु) को पाला देखिनै वंश छुट्टिएको हुनाले आपसी विवाह (Intermarriage) चल्दछ ।

तर आंतरिक विवाह गर्दा "यक" विभाजन गरिन्छ । अघिशुरुमा जनाएको अनुसार थाक्लुङ् (ताक्लुङ) "यक" का साथी पोमेजोङ् पनि हो । यसकारण यसलाई कुकाप्मी "यक" पनि भनिन्छ । दुलाहलाई थाक्लुङ् (ताक्लुङ) यक्मा राखि उत्थान गर्छ भने दुलाहीलाई पोमेजोङ कुकाप्मीमा राखेर उत्थान गर्नुपर्छ । यसै उल्टा सुल्टा उत्थान गरेर माङ्नेना (माङ्हेना) गरिन्छ । यो भन्दा अन्य "यक" का बेहुली ल्याएमा थाक्लुङ् "यक" नै उठाएर विवाह सम्पन्न गरिन्छ।

**लेखक- गजरधन तिगेला**

# खेवाहरुको विभाजन

नेपालको पूर्वीक्षेत्र हाल तेह्रथुम जिल्ला सुदाप गाँउ विकाश समिति जहाँ ताक्लुङ गढले प्रसिद्ध मानिन्छ। त्यस ताकलुङ गढमा प्रान्तिय राज्य खडागरि राज्य शासन गर्ने प्रथम लिम्बुवान राजा खेवानै हुन्। जसलाई इमेवुङ् हाङ् खेवा वा सुन्जेलि सुमेन्देहाङ् खेवा पनि भनिन्छ। यिनको समयमा नेपालका किरात वंशहरु आ-आफ्नो प्रान्त खडागरि बसोवास गरिसकेका थिए। पूर्वी क्षेत्र लिम्बु किराँतको प्रान्तहो। जसलाई १७ थुममा विभाजन गरि बसेका १० लिम्बु मध्येको (छथर ताक्लुङ गढ) मा शासन चलाउने सर्वप्रथम खेवाहरुको पूर्वज इमेवु हाङ् खेवानै हुन्। यिनि सत्ययुगका- पङ्गेनदिङ् खेवा त्रेतायुगका- सुम्लेगे सुम्देक खेवा द्वापरयुगका- साङ्दाङ खेवा र लिङ्दाङ खेवाकै वंशाणुबाट भएको हो।

वर्तमान स्थितिमा खेवाहरु छ थरमा विभाजित भइ देखा परेता पनि यि छ वटै खेवाहरुको पुर्वज इमेवुङ् हाङ खेवानै हुन्। यिनैको पिंढि देखि १० पिढि पछिसम्म खेवा एउटै मात्र थियो। ति १० पिढीं सम्मका वंशावली तल उल्लेख गरिएको छ।

१) इमेवुङ् हाङ् खेवा
२) थोसोइङ काङ्लाइङ् हाङ् खेवा
३-क) पाराभुङ्हिटी खेवा
   ख) सुदाहाङ् खेवा +
३) क) को छोराहरु :-
४-क) सुमेरुहाङ् खेवा
   ख) तोयाहाङ खेवा +
५) थाक्लुङ्हाङ खेवा
६-क) सेमेक्याहाङ खेवा +
   ख) मखेवाहङ् खेवा

ग) सुमेन्दुहाङ् खेवा +

६-ख) को छोराहरु

७-क) सिजोलीहाङ् खेवा

ख) थकिक्युङ्हाङ् खेवा +

७-क) को छोराहरु

८-क) फुङ्पाङ्हाङ् खेवा

ख) यमिन्दाहाङ खेवा +

८-क) को छोराहरु :-

९-क) सुम्मिलि सुम्मेन्देतहाङ् खेवा

ख) सेजोइहाङ् खेवा +

९-क) को छोरा

१०) हाङ्जीलि हाङदुम्वा खेवा

यिनै १० औ पिढिका हाङ्जिलि हाङ्दुम्वा खेवा पछि उनका चार भाई छोराहरुलाई चार थरमा विभाजन गरिदिए। जेठो छेरा- मुक्तिमहाङ खेवालाई 'तिगेला' माइलो छोरा लुम्दुमहाङ् खेवालाई 'मङयाक' र साईलो छोरा लेतुमहाङ खेवालाई 'आङलावाङ' र कान्छोलाई चोर्ङ्हिम्हाङलाई 'चोङ्वाङ् खेवा' वनाई छुट्याई चार थरिमा विभाजीत भए। हाङजीलि हाङदुम्बा खेवाका दुइवटी छोरी पनि थिए।

जेठी -: लोहाङ्दोमा-छोड्देन राजाले विवाह गरेकाथिए।

कान्छी-: पाहाङ्दोमा-विजयपुरका राजाले विवाह गरेकाथिए।

माइलो लम्दुङ्हाङ् मङ्याक खेवाको छेरा एकमात्र थियो। उनको नाम सनातन मङ्याक खेवा, निजको पनि एकमात्र छोरा थियो, उनको नाम रामाजित मङ्याक् खेवा, यिनले तीनवटि श्रीमती विवाह गरेका थिए। जेठि श्रीमतिबाट जन्मेको छेरा हाङ्दुम्वाहाङ्लाई तुम्वा थर बनाए। माइली श्रीमतिबाट जन्मेका छोरा पिफुङ्हाङ्लाई मादेन् थर बनाए। कान्छि श्रीमतिबाट जन्मेका २ छेराहरुलाई मङ्याकनै कायम गराए। यसरी

